



फोन नं. ०७५-५२०००२
फ्याक्स नं. ०७५-५२०३१०



प्रदेश सरकार
५ नं. प्रदेश
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
वन निर्देशनालय

# डिभिजन वन कार्यालय पाल्पा

तानसेन

## फलफुल, वनजन्य तथा जडिबुटीका बिरुवा खरिद सम्बन्धि सिलबन्दी दरभाउ पत्रको सूचना

**(राष्ट्रिय दैनिक लुम्बिनीमा प्रथम पटक प्रकाशित मिति: २०७७/०२/२०)**

डिभिजनल वन अधिकृत

यस कार्यालयको चा.लु आ.व. २०७६/०७७ को स्वीकृत वार्षिक कार्यक्रम अन्तर्गत आपुर्तिकर्ताबाट तपशिल बमोजिमका फलफुल, वनजन्य तथा जडिबुटीका विरुवा खरिद तथा तोकिएको स्थानमा ढुवानी गर्नुपर्ने भएकोले तपशिलका विवरणको परिधिमा रही यस कार्यालयको नियमानुसार सूची दर्ता भएका (सूची दर्ता नभएको भए सो समेत गरी) र प्रचलित कानुन बमोजिम योग्यता पुगेका आपुर्तिकर्ताहरुबाट व्यवसायिक प्रमाण (संस्था दर्ता/नबिकरण प्रमाण पत्र, स्था.ले.नं./मु.अ.कर दर्ता प्रमाण पत्र, गत आ.व.को कर चुक्ता प्रमाण पत्र लगाएतका कागजात प्रतिलिपी) संलग्न राखी यो सूचना राष्ट्रिय दैनिक लुम्बिनी पत्रिकामा प्रथम पटक मिति २०७७/०२/२० मा प्रकाशित भएको मितिले १५ (पन्ध्र) दिन भित्रमा खरीद गरी १६ औं दिनमा दिनको २:०० बजे सम्ममा देहायको शर्तको अधिनमा रही यस कार्यालयमा शिलबन्दी दरभाउपत्र दाखिला गर्न आह्वान गरिन्छ। दरभाउ फाराम यस कार्यालयबाट रु.१०००/- (फिर्ता नहुने गरी) तिरि कार्यालय समयमा खरिद गर्न सकिने छ।

**तपशिल**

| कार्यक्रमको नाम | विरुवा प्रजाति | आपूर्ति गर्नुपर्ने स्थान र समय | | | |
|---|---|---|---|---|---|
| | | स्पेसिफिकेसन | जम्मा परिमाण | जम्मा अधिकतम मूल्य | आपूर्ति गर्नुपर्ने स्थान र समय |
| संघीय सशर्त (११.४.१७.४३) फलफुल विरुवा उत्पादन, वृक्षारोपण वर्ष | चिउरी | आँपको हकमा कलमी, उमेर १ देखी २ वर्ष, १.५ फि. देखी ३.५ फि. उचाई सम्म, पराल/जुट/प्लाष्टिकले माटो सहितको जरा बेरिएको। रोग, किरा नलागेको स्वस्थ विरुवा र अन्य बिरुवाको हकमा बिजु बिरुवा पराल/जुट/प्लाष्टिकले माटो सहितको जरा बेरिएको, उमेर १ देखि २ बर्षको, रोगकिरा नलागेको स्वस्थ बिरुवा। अम्रिसोको हकमा कम्तिमा तिनवटा टुसा भएको स्वस्थ राईजोम। | २,००० | ५,००,०००/- | तानसेन जिल्ला स्थित डिभिजन वन कार्यालय, पाल्पामा, २०७७ साल आषाढ १० गते भित्र आपूर्ति गर्नुपर्ने |
| | कागती | | ८,००० | | |
| | लप्सी | | ३,००० | | |
| | आँप | | १,२५० | | |
| | सुन्तला | | २,००० | | |
| प्रदेश सरकार तर्फ (३०७०००१४४) ११.४.१७.३३ | टिमुर | | १६,५०० | १३,५०,०००/- | |
| | चिउरी | | ४,००० | | |
| | कागती | | १०,०८० | | |
| | अम्रिसो | | २०,००० | | |
| | **जम्मा** | | ६६,८३० | १८,५०,०००/- | |
| ६६,८३० गोटाको अधिकतम खरीद मूल्य अक्षरुपी अठार लाख पचास हजार रुपैया मात्र। | | | | | |

**शर्तहरु :**

१) पत्रिकामा प्रथम पटक सूचना प्रकाशन भएको मिति २०७७/०२/२० ले १५ (पन्ध्र) दिन भित्रमा यस कार्यालयबाट कार्यालय समय भित्र तोकिएको मूल्य (फिर्ता नहुने गरी) तिरी दरभाउपत्र खरिद गर्न सकिने छ। दरभाउपत्र खरिद गर्न ईच्छुक व्यक्ति/फर्म वा कम्पनी का प्रोप्राइटरले दरभाउपत्र खरिद गर्न दिइएको निवेदनको साथमा नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपी, कर दर्ता प्रमाणपत्रको प्रतिलिपी र मूल्य अभिबृद्धि कर दर्ता प्रमाणपत्रको प्रतिलिपी वा स्थायी लेखा नम्बर (PAN) दर्ता प्रमाणपत्रको प्रतिलिपी पेश गर्नुपर्ने छ।



प्रदेश सरकार
५ नं. प्रदेश
उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
वन निर्देशनालय

# डिभिजन वन कार्यालय पाल्पा

तानसेन

फोन नं. ०७५-५२०००२
फ्याक्स नं. ०७५-५२०३१०



डिभिजनल वन अधिकृत
रा.प.द्वि. (प्रा.)

२) खरीद गरिएका दरभाउ पत्रहरु रितपूर्वक भरी सिलबन्दी गरेर मिति २०७७/०३/०३ गते दिनको २:०० बजे समय भित्र यस कार्यालयमा दाखिला गर्न सकिने छ। दरभाउ पत्र बिक्रि गर्ने, दाखिला गर्ने अन्तिम दिन र दरभाउपत्र खोल्ने दिनमा बिदा परेमा सो को भोलीपल्ट बिक्री, दाखिला र खोल्ने कार्य हुनेछ । पेश भएका दरभाउपत्रहरु प्रतिनिधिहरुको रोहवरमा यस कार्यालयमा खोलिने छ। दरभाउपत्रदाता वा निजको प्रतिनिधिको उपस्थिती नभएमा पनि दरभाउपत्र खोल्न बाधा पुग्ने छैन ।

३) जसको नाममा बिक्रि भएको दरभाउपत्र फाराम हो, उसैको तर्फबाट दाखिला गर्नुपर्ने छ ।

४) उल्लेखित जातको विरुवाहरु उपलब्ध गराउन ईच्छुक व्यक्ति/फर्म वा कम्पनी का प्रोप्राइटरले नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपी, कर दर्ता प्रमाणपत्रको प्रतिलिपी र मूल्य अभिबृद्धि कर दर्ता प्रमाणपत्रको प्रतिलिपी वा स्थायी लेखा नम्बर (PAN) दर्ता प्रमाणपत्रको प्रतिलिपी दरभाउपत्रसाथ पेश गर्नुपर्ने छ ।

५) दरभाउपत्रको साथमा कवोल गरेको रकमको २.५% ले हुने धरौटी रकम, कोष तथा लेखा नियन्त्रक कार्यालयको नाममा राष्टिय वाणिज्य बैंक पाल्पा शाखामा रहेको धरौटी खाता नं ३०३०५०२०००००० डिभिजन वन कार्यालय, पाल्पाको कोड नं. ३०७०२५००१५ मा जम्मा गरी सो को सक्कल भौचर वा कम्तिमा ७५ दिन म्याद कायम रहेको रितपूर्वकको बैंक ग्यारेन्टी वा बैंक डार्फट समावेश हुनु पर्ने छ ।

६) दरभाउपत्रमा सकार रकम, अकं र अक्षर दुवैमा लेख्नुपर्ने छ । अंक र अक्षर फरक परेमा अक्षरलाई मान्यता दिईने छ ।

७) म्याद नाघी वा रीत नपुगी पेश हुन आएको दरभाउपत्र उपर कुनै कारवाही गरीने छैन ।

८) दरभाउपत्र सम्बन्धि प्रकाशित सूचनामा उल्लेखित शर्तहरु उल्लङ्घन भएमा दरभाउपत्र मान्य हुने छैन ।

९) दरभाउपत्र सदर वा वदर गर्ने अधिकार, अधिकार प्राप्त अधिकारीका निहीत रहने छ ।

१०) उपयुक्त सुचना सम्बन्धमा कुनैकुरा हेरफेर वा संसोधन गर्नु परेमा यस कार्यालयले गर्न सक्ने छ ।

११) सकार दररेट र बिनियोजित बजेटको आधारमा विरुवाको परिमाणमा सामान्य थपघट हुनसक्ने छ ।

१२) सूचना बमोजिमका विरुवाहरुको गुणस्तर यस कार्यालयका प्रतिनिधीबाट चेकजाँच गराई गुणस्तर ठीक भएमा मात्र विरुवा आपूर्ति गर्नुपर्ने छ ।

१३) तोकिएको स्थानमा विरुवा आपुर्ति भएमा क्षति नपुगेको स्वस्थकर विरुवा गणना गरी मात्र खरीद गरिने छ ।

१४) अन्य शर्तहरुको हकमा प्रचलित आर्थिक ऐन, नियम अनुसार हुने छ ।